


एस्थेटिक डान्स स्टुडियो काठमाडौंमा खोलिएको नयाँ कम्पनी हो । यो कम्पनीले मूलतः नृत्य प्रशिक्षण तथा विधागत कार्यक्रमहरुको आयोजना गर्दछ । यस कम्पनीको आयोजनामा यसभन्दा अघि कत्थक नाचसम्बन्धि प्रशिक्षण तथा बृहत प्रदर्शन आयोजना गरिसकिएको छ । लामो समयको व्यवसायिक अनुभव पछि नृत्य क्षेत्रका कलाकारहरुद्धारा खोलिएको यस कम्पनीले भविष्यमा मौलिक नेपाली तथा विविध राष्ट्रिय/अन्तर्राष्ट्रिय नृत्य विधाहरुको अभ्यास, प्रदर्शन तथा प्रवर्धन गर्ने उद्देश्य राखेको छ ।

सहयोगीहरुः













सरुभक्तको खण्डकाव्यमा आधारित नृत्य-नाटक

# ज्यानमाया

परिकल्पना तथा निर्देशन
नम्रता के.सी.



मितिः २०७३ असोज ४ देखि असोज १५ सम्म
समयः हरेक साँझ ५:१५ बजे (सोमबार बाहेक)
स्थानः मण्डला नाटकघर, अनामनगर, काठमाडौं
सम्पर्क नंः ०१-४२४१७६१/९८४१००७१६६
हरेक शनिबार दिउँसो १ बजे पनि

गाउँबाट भागेर विवाह गरेका एक युगल जोडीको प्रेमकथा नाटक ज्यानमायाको मूल विषयवस्तु रहेको छ । भाग्यले सताइएका र विपन्न वर्गको प्रतिनिधित्व गर्ने मने र कान्छीले आफ्नो प्रेम बचाउन गरेको संघर्षलाई संगीत र नृत्यको माध्यमबाट नाटकको कथानकमा बुनिएको छ । साहित्यकार सरुभक्तले लेख्नुभएको खण्डकाव्य ज्यानमायामा आधारित भएर यो नाटक तयार पारिएको हो ।

## निर्देशकीय

कथा भन्ने मेरो सानैदेखिको रहर हो । कथावाचनको थुप्रै शैलिहरु छन् र नृत्य त्यसमध्येको एउटा बलियो शैलि हुन सक्छ भन्ने मेरो विश्वाश हो । मानिसहरु आफ्नो विश्वाशको काम गर्न रुचाउछन् । म पनि सायद यही विश्वाशको कारण नाटक गरिरहेको छु ।

मेरो यो विश्वाशको आधार कलाकार साथीहरुको प्रतिबद्धता र अथक मेहेनत नै हो । यो नाटक उनीहरुलाई नै समर्पण गर्दछु । नाटकसम्बन्धि जस्तासुकै गाली र गुनासाहरुको एकल हकदार म आफैं हुन चाहन्छु ।

नाटक तयारीको क्रममा सघाउनुहुने सबैमा आभार र आदरणीय दर्शकहरुप्रति हार्दिक नमन ।

-नम्रता के.सी.

## सापेक्ष

देश र जीवनमा अनेक सौन्दर्य छन् । जहाँ सौन्दर्य छन् त्यहाँ कुरुपता पनि विद्यमान छन् । यिनै सुन्दरता र कुरुपताबीच जीवनको अर्थवत्ता खोज्दा ज्यानमाया जन्मेको हो । मायाका धेरैधेरै कथाहरुमध्ये ज्यानमाया हिमाली-पहाडी धरातलमा रचना गरिएको संघर्षशील श्रमजीवी जनताको कथाव्यथा हो र यही रुपमा मलाई यो गीतिकाव्य प्रिय लाग्छ ।

अहिले यो गीतिकाव्य नाट्य रुपान्तर भई रंगमञ्चमा प्रस्तुत हुने कुराले म उत्साहित भएको छु । समकालिन रंगमञ्चले नयाँ परिचय खोज्न लागेको समयमा प्रस्तुतिको यस प्रयासले सार्थक अभिप्राय बोक्ने म विश्वास गर्छु ।

-सरुभक्त

## मञ्चमा

कृपा बज्राचार्य, रियर राई, निशा कार्की, संयोग गुराँगाई,
शारदा अधिकारी, कुन्ती सिमाली, सुरज श्रेष्ठ,
प्रतीक दुलाल, मनिषा थापा बस्नेत र नेहा तामाङ

## नेपथ्यमा

मञ्च परिकल्पनाः घनश्याम श्रेष्ठ
मञ्च निर्माणः हुम बिसी, सुरेश कार्की र संयोग गुरागाई
मञ्च सामाग्रीः रियर राई, कुन्ती सिमाली र नेहा तामाङ
वेषभुषाः कृपा बज्राचार्य र मनिषा बस्नेत
पोस्टर/ब्रोसरः इँगिहोपो कोइँच सुनुवार, सिजन दाहाल र अमृत कार्की
प्रकाश परिकल्पनाः उमेश तामाङ
प्राविधिक सहयोगीः इँगिहोपो कोइँच सुनुवार र रोहित पौडेल
प्रकाश परिचालनः अनुप न्यौपाने
गीतकारः संयोग गुरागाई
संगीत संयोजनः गोपाल राई र गोविन्द के.सी.
टिकट तथा सूचनाः सपना चौधरी
बजार व्यवस्थापनः सुरज श्रेष्ठ र प्रतीक दुलाल
मञ्च व्यवस्थापकः निशा कार्की
**लेखकः सरुभक्त**
**निर्देशन सहयोगीः कृपा बज्राचार्य**
**परिकल्पना तथा निर्देशनः नम्रता के.सी.**

हार्दिक आभारः

सुनील पोखरेल, राजन खतिवडा, बुद्धि तामाङ, प्रकाश गन्धर्व, अनुपम शर्मा, बिकास बुढाथोकी, निश्मा घिमिरे, निमिश कट्टेल, सुरज मल्ल, सुलक्षण भारती, नरेन्द्र बराल, राजीव समर, थिएटर ल्याव ५, ज्ञः डिस्कभर योरसेल्फ, माता मनकामना कफी सप, टाइम्स स्कुल र लेट्स इन्टरटेनमेन्ट प्रालि।